श्रीः

# श्रीनामरामायणं, श्रीरामसहस्रनामस्तोत्रं श्रीरामरक्षास्तोत्रं ( सानुवादम् ) श्रीरामसहस्रनामावलीसहितञ्च ।





प्रकाशिका

श्रीमती क० यज्ञराजशंशेर

ज० ब० रा० ( काशी )

# श्रीनामरामायण, श्रीरामसहस्रनामस्तोत्र
# श्रीरामरक्षास्तोत्रं ( सानुवादम् )
# श्रीरामसहस्रनामावलीसहितञ्च ।



प्रकाशिका

श्रीमती क० यज्ञराजशंशेर

ज० ब० रा० ( काशी )

श्रीः

# भूमिका

महर्षि वाल्मीकिले भगवान् रामको अलौकिक आदर्श चरित्र इतिहासरूप रामायणमा, महर्षि कृष्णद्वैपायनले महापुराण श्रीमद्भागवतमा र ब्रह्माण्डपुराणको अन्तर्गत अध्यात्मरामायणमा, अन्तिमयुगमा गोस्वामी तुलसीदासले रामचरित-मानसमा एवम् नेपाली भाषाका आदिकवि भानुभक्त आचार्यले आफ्नो रामायणमा चित्रण गरेर आफ्नो अन्तःकरण पवित्र पार्नु भयो।

यद्यपि परमात्माका मङ्गलमय अवतार अनन्त छन् परन्तु भगवान्‌को राम र कृष्णका रूपमा पूर्णता परिलक्षित हुन्छ। यी दुइमा पनि "रामो विग्रहवान् धर्मः" अर्थात् "रामचन्द्र शरीरधारी धर्म हुनु हुन्छ" यो उक्तिको अनुसार भगवान् रामको चरित्र समस्त विश्वमा आदर्श र मननीय छ; जसको अनुसरण गर्नाले भुक्ति र मुक्ति दुवै कुराको प्राप्ति हुन सक्दछ।

आज म उनै भगवान् श्रीरामको चरित्रको संक्षिप्त वर्णनस्वरूप श्रीनामरामायण, बुधकौशिकविरचित रामरक्षास्तोत्र र शिवपुराणस्थ श्रीरामसहस्रनामस्तोत्रको नेपाली भाषामा अनुवाद गरेर आफ्नो अन्तःकरण र प्रयासलाई पवित्र गरिरहेको छु। यो ग्रन्थको प्रकाशनको व्ययभार वहन गर्ने श्रीमती क० यज्ञराजशंशेर ज. ब. रा. को अनुरोधले म यो कार्यमा प्रवृत्त भएको हुं। शीघ्रता र बुद्धिमन्दताले हुन गएको

त्रुटिमा सहृदय पाठकवर्गबाट क्षमा पाउने आशा राखी म आफ्नो वक्तव्य समाप्त गर्दछु ।

अन्तमा यस ग्रन्थको मुद्रणमा शीघ्रतापूर्वक शुद्धि र सौन्दर्यको आधान गर्ने आचार्यमुद्रणालय प्रेसका आचार्य श्रीप्राणलालजीको पनि म कृतज्ञता ज्ञापन गर्दछु ।

सं० २०३६ वैशाख शुक्ल
नवमी ( जानकीजयन्ती ) ।

भवदीय वशंवद
शेषराजशर्मा रेग्मी

श्रीः

# श्रीरामनामसंकीर्तनम्

ॐ श्रीसीतालक्ष्मणभरतशत्रुघ्नहनूमत्सहित-श्रीरामचन्द्रपरब्रह्मणे नमः ।

## श्रीनामरामायणम् ।

### १ बालकाण्डम्

| | | | | |
|---|---|---|---|---|
| १ | शुद्धब्रह्मपरात्पर | राम | = शुद्धब्रह्म पर भन्दा पर | राम |
| २ | कालात्मकपरमेश्वर | राम | = कालस्वरूप परमेश्वर | राम |
| ३ | शेषतल्पसुखनिद्रित | राम | = शेषनागरूप पलङ्‌मा सुखसाथ निदाएका | राम |
| ४ | ब्रह्माद्यमरप्रार्थित | राम | = ब्रह्मा आदि देवताहरूले प्रार्थना गरिएका | राम |
| ५ | चण्डकिरणकुलमण्डन | राम | = सूर्यकुलका भूषणस्वरूप | राम |
| ६ | श्रीमद्दशरथनन्दन | राम | = श्रीमान् दशरथका पुत्र | राम |
| ७ | कौशल्यासुखवर्द्धन | राम | = कौशल्याको सुख बढ़ाउने | राम |
| ८ | विश्वामित्रप्रियधन | राम | = विश्वामित्रका प्यारा धनस्वरूप | राम |
| ९ | घोरताटकाघातक | राम | = भयङ्कर ताटकालाई मार्ने | राम |
| १० | मारीचादिनिपातक | राम | = मारीच आदि लाई गिराउने | राम |

११ कौशिकमखसंरक्षक राम = विश्वामित्रको यज्ञको
रक्षा गर्ने राम

१२ श्रीमदहल्योद्धारक राम = श्रीमती अहल्याको
उद्धार गर्ने राम

१३ गौतममुनिसंपूजित राम = गौतममुनिले पूजा गरिएका राम

१४ सुरमुनिवरगणसंस्तुत राम = देवता र मुनिका श्रेष्ठ
गणले स्तुति गरिएका राम

१५ नाविकधावितमृदुपद राम = मल्लाहाले धोइएका कोमल
पाउ भएका राम

१६ मिथिलापुरजनमोहक राम = मिथिलाको शहरका जन-
हरूमा मोह गर्ने राम

१७ विदेहमानसरञ्जक राम = जनकको चित्तलाई
खुशी पार्ने राम

१८ त्र्यम्बककार्मुक-
भञ्जक राम = महादेवको धनु भाँच्ने राम

१९ सीताऽर्पितवरमालिक राम = सीताजीले वरमाला अर्पण
= गरिएका राम

२० कृतवैवाहिककौतुक राम = विवाहको संस्कार गरेका राम

२१ भार्गवदर्पविनाशक राम = परशुरामको घमण्डको
नाश गर्ने राम

२२ श्रीमद्योध्यापालक राम = श्री भएकी अयोध्याको
पालन गर्ने राम

## २ अयोध्याकाण्डम्

२३ अगणितगुणगणभूषित राम = असंख्य गुणसमूहले
अलङ्कृत राम

२४ अवनीतनयाकामित राम = पृथ्वीकी छोरी (सीता)-
ले इच्छा गरिएका राम

२५ राकाचन्द्रसमानन राम = पूर्णिमाका चन्द्र जस्तो
मुख भएका राम

२६ पितृवाक्याश्रितकानन राम= पिताको वाक्यले वनको
आश्रय लिने राम

२७ प्रियगुहविनिवेदितपद राम = प्यारा गुहले स्थानको
निवेदन गरिएका राम

२८ तत्क्षालितनिजमृदुपद राम = गुहले पखालिएका आफ्ना
कोमल पाउ भएका राम

२९ भरद्वाजमुखानन्दक राम = भरद्वाज आदि ऋषिलाई
आनन्दित गर्ने राम

३० चित्रकूटाऽद्रिनिकेतन राम = चित्रकूट पर्वतलाई वासस्थान
बनाउने राम

३१ दशरथसन्ततचिन्तित राम = दशरथले निरन्तर
चिन्ता गरिएका राम

३२ कैकेयीतनयाऽर्थित राम = कैकेयीका पुत्र ( भरत )-
ले प्रार्थना गरिएका राम

३३ विरचितनिजपितृकर्मक राम=आफ्ना पिताको कर्म गर्ने राम

३४ भरताऽर्पितनिजपादुक राम = भरतलाई आफ्नो पादुका
अर्पण गर्ने राम

## ३ अरण्यकाण्डम्

३५ दण्डकवनजनपावन राम = दण्डक वनका जनलाई
पवित्र गर्ने राम

३६ दुष्टविराधविनाशन राम = दुष्टविराधको नाश गर्ने राम

३७ शरभङ्गसुतीक्ष्णसमर्चित राम=शरभङ्ग र सुतीक्ष्णले पूजा
गरिएका राम

३८ अगस्त्याऽनुग्रहवर्धित राम= अगस्त्यको अनुग्रहले बढ़ेका राम

३९ गृध्राऽधिपसंसेवित राम = गिद्धका राजा ( जटायु )ले
सेवा गरिएका राम

४० पञ्चवटीतटसुस्थित राम = पञ्चवटीको तटमा सुख-
पूर्वक रहेका राम

४१ शूर्पणखाऽर्तिविधायक राम= शूर्पणखालाई पीडाको
विधान गर्ने राम

४२ खरदूषणमुखसूदक राम = खरदूषण आदि राक्षस-
लाई मार्ने राम

४३ सीताप्रियहरिणाऽनुग राम=सीताजीको प्यारो मृगको
पछि लाग्ने राम

४४ मारीचार्तिकृदाशुग राम = मारीचलाई पीडा गर्ने
वाण भएका राम

४५ विनष्टसीताऽन्वेषक राम = हराएकी सीताजीको
खोजी गर्ने राम

४६ गृध्राऽधिपगतिदायक राम= गिद्धको राजा ( जटायु )-
लाई गति दिने राम

४७ शबरीदत्तफलाऽशन राम= शबरीले दिएका फल खाने राम

४८ कबन्धबाहुच्छेदन राम = कबन्धको बाहुको छेदन गर्ने राम

## ४ किष्किन्धाकाण्डम्

४९ हनुमत्सेवितनिजपद राम = हनूमान्ले सेवा गरिएका
आफ्ना पाउ भएका राम

५० नतसुग्रीवाऽभीष्टद राम = नम्र भएका सुग्रीवलाई
इच्छा गरिएको कुरा दिने राम

५१ गर्वितवालिसंहारक राम = घमण्ड भएको वालीको
संहार गर्ने राम

५२ वानरदूतप्रेषक राम = वानर दूत (हनूमान्) लाई पठाउने रामः

५३ हितकरलक्ष्मणसंयुत राम = हितगर्ने लक्ष्मणजीले युक्त भएका रामः

## ५ सुन्दरकाण्डम्

५४ कपिवरसन्ततसंस्मृत राम = वानरश्रेष्ठ (सुग्रीव) ले निरन्तर संझिएका रामः

५५ तद्गतिविघ्नध्वंसक राम = सुग्रीवको गतिको विघ्नका नाशक रामः

५६ सीताप्राणाधारक राम = सीताजीको प्राणका आधार भएका रामः

५७ दुष्टदशाननदूषित राम = दुष्ट रावणले दूषित भएका रामः

५८ शिष्टहनूमद्भूषित राम = सज्जन हनूमानले अलङ्कृत भएका रामः

५९ सीतावेदितकाकाऽवन राम = सीताजीले जनाइएको कागको रक्षा गर्ने रामः

६० कृतचूडामणिदर्शन राम = सीताजीको शिरको मणि हेर्ने रामः

६१ कपिवरवचनाश्वासित राम = वानरश्रेष्ठ (हनूमान्) ले आश्वासन गरिएका रामः

## ६ युद्धकाण्डम्

६२ रावणनिधनप्रस्थित राम = रावणलाई मार्न प्रस्थान गर्ने राम

६३ वानरसैन्यसमावृत राम = वानरका सेनाले घेरिएका राम

६४ शोषितसरिदीशाऽर्थित राम = सुकाइएका समुद्रले प्रार्थना गरिएका राम

६५ विभीषणाऽभयदायक राम = विभीषणजीलाई अभयदिने राम

६६ पर्वतसेतुनिबन्धक राम = पर्वतहरूको पुल बाँधन लगाउने राम

६७ कुम्भकर्णशिरश्छेदक राम = कुम्भकर्णको शिर काट्ने राम

६८ राक्षससङ्घविमर्दक राम = राक्षससमूहको मर्दन गर्ने राम

६९ अहिमहिरावण-चारण राम = अहिरावण र महि रावण-कहां जाने राम

७० संहृतदशमुखरावण राम = दश मुख भएको रावणको संहार गर्ने राम

७१ विधि भवमुखसुरसंस्तुत राम= ब्रह्मा र शिव आदि देवताहरूले स्तुति गरिएका राम

७२ खस्थित-दशरथवीक्षित राम = आकाशमा रहेका दशरथले देखिएका राम

७३ सीतादर्शन-मोदित राम = सीताजीको दर्शनले प्रसन्न भएका राम

७४ अभिषिक्तविभीषणसंनत राम = अभिषेक गरिएका
विभीषणले प्रणाम गरिएका राम

७५ पुष्पकयानारोहण राम = पुष्पक विमानमा चढ्ने राम

७६ भरद्वाजाऽभिनिषेवण राम = भरद्वाज ऋषिले सेवा
गरिएका राम

७७ भरतप्राणप्रियकर राम = भरतको प्राणलाई प्रिय गर्ने राम

७८ साकेतपुरी-भूषण राम = अयोध्यापुरीका अलङ्कार-
स्वरूप राम

७९ सकलस्वीय-समानत राम = सर्वै आत्मीयहरूले
प्रणाम गरिएका राम

८० रत्नलसत्पीठास्थित राम = रत्नहरूले शोभित
सिंहासनमा राज भएका राम

८१ पट्टाभिषेकाऽलङ्कृत राम = राज्याभिषेकले भूषित राम

८२ पार्थिव-कुल-संमानित राम = राजसमूहले संमान गरिएका राम

८३ विभीषणाऽर्पितरङ्गक राम = विभीषणमा अनुराग
अर्पण गर्ने राम

८४ कीशकुलाऽनुग्रहकर राम = वानरसमूहमा अनुग्रह
( निघा ) गर्ने राम

८५ सकलजीवसंरक्षक राम = संपूर्ण जीवको संरक्षण गर्ने राम

८६ समस्तलोकाधारक राम = संपूर्ण लोकहरूका आधार राम

## ७ उत्तरकाण्डम्

८७ आगतमुनिगणसंस्तुत राम = आएका मुनिसमूहले
स्तुति गरिएका राम

८८ विश्रुतदशकण्ठोद्भव राम = रावणको उत्पत्ति सुनेका राम

८९ सीताऽऽलिङ्गन-निर्वृत राम = सीताजीको आलिङ्गनले
सुखी भएका राम

९० नीति सुरक्षित-जनपद राम = नीतिले देशको रक्षागरेका राम

९१ विपिनत्याजित-जनकज राम = सीतालाई वनमा त्याग
गर्न लगाउने राम

९२ कारित-लवणाऽसुरवध राम = लवणाऽसुरलाई मार्न
लगाउने राम

९३ स्वर्गत-शम्बुक-संस्तुत राम = स्वर्गमा गएको शम्बूकले
स्तुति गरिएका राम

९४ स्वतनयकुशलव-नन्दित राम = आफ्ना पुत्र कुश र
लवले खुशी भएका राम

९५ अश्वमेधक्रतु-दीक्षित राम = अश्वमेघ यज्ञको दीक्षा
लिएका राम

९६ कालावेदितसुरपद राम = कालले स्वर्गमा सवारी
हुन बिन्ति गरिएका राम

९७ आयोध्यकजनमुक्तिद राम = अयोध्यावासीहरूलाई
मुक्ति दिने राम

९८ विधिमुखविबुधानन्दक राम = ब्रह्मा आदि देवताहरूलाई
आनन्द दिने राम

९९ तेजोमयनिजरूपक राम = तेजः प्रचुर आफ्नो रूप भएका राम

१०० संसृति बन्धविमोचक राम = संसारको बन्धन छुटाउने राम

१०१ धर्मस्थापन-तत्पर राम = धर्मको स्थापनमा तत्पर
भएका राम

१०२ भक्तिपरायण-मुक्तिद राम = आफ्नो भक्तिमा लागेका-लाई मुक्ति दिने राम

१०३ सर्वचराऽचरपालक राम = सबै जङ्गम र स्थावरको
पालन गर्ने राम

१०४ सर्वभवामयवारक राम = संपूर्ण संसारको रोग हटाउने राम

१०५ वैकुण्ठालयसंस्थित राम = वैकुण्ठको भवनमा रहेका राम

१०६ नित्यानन्द पदस्थित राम = नित्य आनन्द स्थानमा रहेका राम

१०७ राम राम जय राजा राम

१०८ राम राम जय सीता राम

भयहर मङ्गल दशरथ-राम = भयहरण गर्ने मङ्गलरूप
दशरथपुत्र राम

जय जय मङ्गल सीता राम
मङ्गलकर जयमङ्गल राम
संगतशुभविभवोदय राम = शुभ सम्पत्तिको उदयले युक्त राम
आनन्दाऽमृतवर्षक राम = आनन्दरूप अमृतको वर्षण गर्ने राम
आश्रितवत्सल जय जय राम = आश्रितमा स्नेह गर्ने जय जय राम
रघुपति राघव राजा राम = रघुवंशमा श्रेष्ठ, रघुवंशमा उत्पन्न राजा राम
पतितपावन सीता राम = पतितलाई पवित्र गर्ने सीता राम

ॐ श्रीरामार्पणमस्तु ।

श्रीः

# अथ साऽनुवादं रामरक्षास्तोत्रम् ।

श्रीगणेशाय नमः । अस्य श्रीरामरक्षास्तोत्रमन्त्रस्य बुधकौशिकऋषिः, श्रीसीतारामचन्द्रो देवता, अनुष्टुप् छन्दः, सीता शक्तिः, श्रीमद्धनूमान् कीलकं, श्रीरामचन्द्रप्रीत्यर्थे रामरक्षास्तोत्रजपे विनियोगः ।

अनुवाद— यो श्रीरामरक्षास्तोत्र मन्त्रको बुधकौशिक ऋषि, श्रीसीतारामचन्द्र देवता, अनुष्टुप् छन्द, सीता शक्ति, श्रीमान् हनूमान् कीलक, श्रीरामचन्द्रको प्रीतिको निमित्त रामरक्षास्तोत्रको जपमा विनियोग छ ।

अथ ध्यानम्—

ध्यायेदाजानुबाहुं धृतशरधनुषं बद्धपद्मासनस्थं
पीतं वासो वसानं नवकमलदलस्पर्धिनेत्रं प्रसन्नम् ।
वामाऽङ्कारूढसीतामुखकमलमिलल्लोचनं नीरदाभं
नानाऽलङ्कारदीप्तं दधतमुरुजटामण्डलं रामचन्द्रम् ॥१॥

अनुवाद—दीर्घ बाहु भएका, बाण र धनु लिएका, पद्मासन बाँधी बसेका, पीताम्बर पहिरेका, नयां कमलको पातजस्ता नेत्र भएका, बायाँ काखमा बसेकी सीताको मुखकमलमा नेत्र दिएका, मेघजस्ता (नीलो वर्ण भएका), अनेक अलङ्कारहरूले प्रकाशित, ठूलो जटामण्डल धारण गरेका यस्ता प्रसन्न भएका श्रीरामचन्द्रको ध्यान गरोस् ।

चरितं रघुनाथस्य शतकोटिप्रविस्तरम् ।
एकैकमक्षरं पुंसां महापातकनाशनम् ॥ १ ॥

अनु०—जसको एक एक अक्षर, पुरुषहरूको महापातक ( ब्रह्महत्या-आदि ) को नाश गर्दछ, रघुनाथ ( श्रीरामचन्द्र ) को सयकरोड़ विस्तर भएको चरित्र छ ॥ १ ॥

ध्यात्वा नीलोत्पलश्यामं रामं राजीवलोचनम् ।
जानकीलक्ष्मणोपेतं जटामुकुटमण्डितम् ॥ २ ॥
साऽसितूणधनुर्बाणपाणिं नक्तञ्चराऽन्तकम् ।
स्वलीलया जगत्त्रातुमाविर्भूतमजं विभुम् ॥ ३ ॥
रामरक्षां पठेत्प्राज्ञः पापघ्नीं सर्वकामदाम् ।

अनु०—नीलकमल झैं श्याम वर्ण भएका, कमलजस्ता नेत्र भएका, सीता र लक्ष्मणले युक्त, जटामुकुटले अलङ्कृत ॥ २ ॥ तर्वार, तरकश, धनु र बाण हातमा लिएका, राक्षसको संहार गर्ने, आफ्नो लीलाले जगत्को रक्षा गर्न अवतार लिएका, वस्तुतः जन्मरहित, व्यापक, यस्ता रामलाई ध्यान गरेर बुद्धिमान् पुरुष पापनाश गर्ने, सब इच्छा पूर्ण गर्ने रामरक्षास्तोत्रको पाठ गरोस् ॥ ३ ॥

अथ रामरक्षास्तोत्रम्—

शिरो मे राघवः पातु, भालं दशरथात्मजः ॥ ४ ॥

अनु०—राघव ( रघुवंशमा उत्पन्न ) ले मेरो शिर, दशरथका पुत्रले मेरो भाल ( निधार ) को रक्षा गरून् ॥ ४ ॥

कौशल्येयो दृशौ पातु, विश्वामित्रप्रियः श्रुती ।
घ्राणं पातु मखत्राता, मुखं सौमित्रिवत्सलः ॥ ५ ॥

अनु०—कौशल्याका पुत्रले मेरा नेत्र, विश्वामित्रका प्रियले मेरा कान, यज्ञका रक्षकले मेरो नाक र लक्ष्मणसँग स्नेह गर्ने रामले मेरो मुखको रक्षा गरून् ॥ ५ ॥

जिह्वां विद्यानिधिः पातु, कण्ठं भरतवन्दितः ।
स्कन्धौ दिव्यायुधः पातु, भुजौ भग्नेशकार्मुकः ॥ ६ ॥

अनु०—विद्याका निधि ( खजाना, अर्थात् राम ) ले मेरो जिभ्रो, भरतले अभिवादित ( राम ) ले मेरो कण्ठ, दिव्य ( स्वर्गीय ) हतियार लिएका ( राम ) ले मेरा दुइ काँध र महादेवको धनु भाँच्ने ( राम ) ले मेरा दुइ बाहुको रक्षा गरून् ॥ ६ ॥

करौ सीतापतिः पातु, हृदयं जामदग्न्यजित् ।
मध्यं पातु खरध्वंसी, नाभिं जाम्बवदाश्रयः ॥ ७ ॥

अनु०—सीताका पतिले मेरा दुइ हात, परशुरामलाई जित्ने (राम) ले मेरो हृदय, खर राक्षसको ध्वंस गर्ने (राम)ले मेरो कम्मर र जाम्बवान्का आश्रय ( राम ) ले मेरो नाभिको रक्षा गरून् ॥ ७ ॥

सुग्रीवेशः कटी पातु, सक्थिनी हनुमत्प्रभुः ।
ऊरू रघूत्तमः पातु, रक्षःकुलविनाशकृत् ॥ ८ ॥

अनु०—सुग्रीवका स्वामीले मेरा कटि, हनूमान्का प्रभुले मेरा तिघ्रा, राक्षसवंशको विनाश गर्ने रघुवंशमा उत्तम ( राम ) ले मेरा ऊरूको रक्षा गरून् ॥ ८ ॥

जानुनी सेतुकृत्पातु, जङ्घे दशमुखाऽन्तकः ।
पादौ विभीषणश्रीदः, पातु रामोऽखिलं वपुः ॥ ९ ॥

अनु०—समुद्रमा सेतु ( पुल ) बाँध्नेले मेरा घुँडा, रावणको अन्त गर्नेले मेरा पिँडौला, विभीषणलाई राज्यलक्ष्मी दिनेले मेरा पाउ र रामचन्द्रले मेरो संपूर्ण शरीरको रक्षा गरून् ॥ ९ ॥

एतां रामबलोपेतां रक्षां यः सुकृती पठेत् ।
स चिरायुः सुखी पुत्री विजयी विनयी भवेत् ॥ १० ॥

अनु०—श्रीरामको शक्तिले युक्त यो रामरक्षास्तोत्र जो पुण्यात्मा पाठ गर्छ त्यो दीर्घायु, सुखी, पुत्रयुक्त, विजयी र विनय ( शिक्षा वा-नम्रता ) ले युक्त होला ॥ १० ॥

पाताल-भूतलव्योमचारिणश्छद्मचारिणः ।
न द्रष्टुमपि शक्तास्ते रक्षितं रामनामभिः ॥ ११ ॥

अनु०—रामका नामहरूले रक्षा गरिएको पुरुषलाई कपट पूर्वक विचरणशील त्यस्ता पाताल, भूतल र आकाशमा चल्नेहरू हेर्न पनि समर्थ हुँदैनन् ॥ ११ ॥

रामेति रामभद्रेति रामचन्द्रेति वा स्मरन् ।
नरो न लिप्यते पापैर्भुक्तिं मुक्तिं च विन्दति ॥ १२ ॥

अनु०—"राम" "रामभद्र" अथवा "रामचन्द्र" यस्तो स्मरण गर्ने पुरुष पापहरूले लिप्त हुंदैन, भुक्ति र मुक्ति पनि पाउँछ ॥ १२ ॥

जगज्जैत्रैकमन्त्रेण रामनाम्नाऽभिरक्षितम् ।
यः कण्ठे धारयेत्तस्य करस्थाः सर्वसिद्धयः ॥ १३ ॥

अनु०—जगत् जिले, मुख्य मन्त्र रामनामले रक्षा गरिएको रामरक्षा-स्तोत्र जो कण्ठमा धारण गर्छ, त्यसका सम्पूर्ण सिद्धिहरू हातमा रहन्छन् ॥ १३ ॥

वज्रपञ्जरनामेदं यो रामकवचं स्मरेत् ।
अव्याहताज्ञः सर्वत्र लभते जयमङ्गलम् ॥ १४ ॥

अनु०—जो वज्रपञ्जर नाम भएको रामकवचको स्मरण गर्छ, त्यसको आज्ञा कहीं पनि रोकिंदैन र त्यो सर्वत्र जय मङ्गल पाउँछ ॥ १४ ॥

आदिष्टवान् यथा स्वप्ने रामरक्षामिमां हरः ।
तथा लिखितवान् प्रातः प्रबुद्धो बुधकौशिकः ॥ १५ ॥

अनु०—महादेवले यो रामरक्षा स्तोत्र स्वप्नमा जसरी आज्ञा गर्नुभयो बेहान ब्यूँझेका बुध कौशिकले त्यसैगरी लेखे ॥ १५ ॥

आरामः कल्पवृक्षाणां, विरामः सकलापदाम् ।
अभिरामस्त्रिलोकानां, रामः श्रीमान् स नः प्रभुः ॥ १६ ॥

अनु०—कल्पवृक्ष ( इच्छा पूर्ण गर्ने ) हरूका बगैंचा (जस्ता), संपूर्ण आपत्ति हरूको विराम ( समाप्ति ) स्वरूप र तीन लोकका सुन्दर ती श्रीमान् राम हाम्रा प्रभु हुनुहुन्छ ॥ १६ ॥

तरुणौ रूपसंपन्नौ सुकुमारौ महाबलौ ।
पुण्डरीकविशालाक्षौ चीरकृष्णाऽजिनाऽम्बरौ ॥ १७ ॥

अनु०—जवान, सुन्दर, सुकुमार, ठूलो बल भएका, श्वेत कमल-जस्ता ठूला नेत्र भएका, वृक्षको वल्कल र कृष्णसार मृगको छालाको वस्त्र पहिरेका ॥ १७ ॥

फलमूलाशिनौ दान्तौ तापसौ ब्रह्मचारिणौ ।
पुत्रौ दशरथस्यैतौ भ्रातरौ रामलक्ष्मणौ ॥ १८ ॥

अनु०—फलमूल खाने, तपस्याको दुःख सहने, तपस्वी, ब्रह्मचारी, दशरथका पुत्र यी राम र लक्ष्मण दाजु भाई हुनुहुन्छ ॥ १८ ॥

शरण्यौ सर्वसत्त्वानां, श्रेष्ठौ सर्वधनुष्मताम् ।
रक्षःकुलनिहन्तारौ त्रायेतां नो रघूत्तमौ ॥ १९ ॥

अनु०—संपूर्ण प्राणीहरूको रक्षा गर्न समर्थ, सब धनुर्धारीहरूमा श्रेष्ठ र राक्षसवंशको संहार गर्ने रघुकुल श्रेष्ठ अर्थात् राम र लक्ष्मण हामीहरूलाई रक्षा गर्नुहोस् ॥ १९ ॥

आत्तसज्यधनुषाविषुस्पृशावक्षयाशुगनिषङ्गसङ्गिनौ ।
रक्षणाय मम रामलक्ष्मणावग्रतः पथि सदैव गच्छताम् ॥२०॥

अनु०—ताँदोको साथ धनु लिएका, बाणको स्पर्श गर्ने, कहिले समाप्त न हुने बाण भएको तरकश साथमा भिरेका यस्ता राम र लक्ष्मण मार्गमा मेरो रक्षा गर्न सधैं अगि जानु होस् ॥ २० ॥

सन्नद्धः कवची खड्गी चापबाणधरो युवा ।
गच्छन् मनोरथोऽस्माकं रामः पातु सलक्ष्मणः ॥ २१ ॥

अनु०—युद्धको लागि तयार भएका, कवच, खड्ग, धनु र बाण लिएका, जवान, हिंड्ने भएका, हाम्रा अभिलाषस्वरूप, लक्ष्मणका साथ श्रीराम हाम्रो रक्षा गर्नुहोस् ॥ २१ ॥

रामो दाशरथिः शूरो लक्ष्मणाऽनुचरो बली ।
काकुत्स्थः पुरुषः पूर्णः कौसल्येयो रघूत्तमः ॥ २२ ॥

अनु०—दशरथका पुत्र, शूरा, लक्ष्मण अनुचर भएका, बलवान्, ककुत्स्थका वंशमा उत्पन्न, कौसल्याका पुत्र, पूर्ण पुरुष, रघुवंशमा उत्तम श्रीराम हुनुहुन्छ ॥ २२ ॥

वेदान्तवेद्यो यज्ञेशः पुराणपुरुषोत्तमः ।
जानकीवल्लभः श्रीमानप्रमेयपराक्रमः ॥ २३ ॥

अनु०—वेदान्तले जानिने भएका, यज्ञका स्वामी, प्राचीन पुरुषहरूमा उत्तम, सीताका प्रिय, श्रीमान्, प्रमाण गर्न नसकिने पराक्रम भएका ॥२३॥

इत्येतानि जपन्नित्यं मद्भक्तः श्रद्धयाऽन्वितः ।
अश्वमेधादिकं पुण्यं संप्राप्नोति न संशयः ॥ २४ ॥

अनु०—यी पहिले कहिएका नामहरू सधैं जप्ने, श्रद्धाले युक्त मेरो भक्त, अश्वमेध आदि यज्ञको पुण्य पाउँछ, यस कुरामा शङ्का छैन ॥२४॥

रामं दूर्वादलश्यामं पद्माक्षं पीतवाससम् ।
स्तुवन्ति नामभिर्दिव्यैर्न ते संसारिणो नराः ॥ २५ ॥

अनु०—दूबोको पात झैं श्यामवर्ण, कमलजस्ता नेत्र भएका, पीताम्बर पहिरेका रामलाई जो दिव्य ( अलौकिक ) नामहरूले स्तुति गर्छन् ती मनुष्यहरू संसारी ( जन्म र मरण भएका ) हुँदैनन् अर्थात् मुक्त हुन्छन् ॥ २५ ॥

रामं लक्ष्मणपूर्वजं रघुवरं सीतापतिं सुन्दरं
काकुत्स्थं करुणाऽर्णवं गुणनिधिं विप्रप्रियं धार्मिकम् ।
राजेन्द्रं सत्यसन्धं दशरथतनयं श्यामलं शान्तमूर्तिं
वन्दे लोकाऽभिरामं रघुकुलतिलकं राघवं रावणाऽरिम् ॥२६॥

अनु०—लक्ष्मणका दाजु, रघुवंशमा श्रेष्ठ, सीताका पति, सुन्दर, ककुत्स्थका वंशमा उत्पन्न, दयाका समुद्र, गुणका निधि ( खजाना ), ब्राह्मणका प्रिय, धर्मात्मा, राजाहरूमा इन्द्र ( श्रेष्ठ ), सत्य प्रतिज्ञा भएका, दशरथका पुत्र, श्यामवर्ण, शान्त मूर्ति भएका, लोकमा मनोहर, रघुवंशका तिलक ( श्रेष्ठ ), रघुवंशमा उत्पन्न, रावणका शत्रु यस्ता रामलाई म अभिवादन गर्दछु ॥ २६ ॥

रामाय रामभद्राय रामचन्द्राय वेधसे ।
रघुनाथाय नाथाय सीतायाः पतये नमः ॥ २७ ॥

अनु०—रामभद्र, रामचन्द्र, वेधा ( ब्रह्मस्वरूप ), रघुवंशमा श्रेष्ठ, स्वामी, सीताका पति यस्ता रामलाई नमस्कार छ ॥ २७ ॥

श्रीराम राम रघुनन्दन राम राम
श्रीराम राम भरताऽग्रज राम राम ।
श्रीराम राम रणकर्कश राम रामं
श्रीराम राम शरणं भव राम राम ॥ २८ ॥

अनु०—हे श्रीराम ! राम ! रघुनन्दन ! राम ! राम ! हे श्रीराम ! राम ! भरताऽग्रज ( भरतका दाजु ) राम ! राम ! हे श्रीराम ! राम ! युद्धमा कठोर ! राम ! राम ! हे श्रीराम ! राम ! राम ! राम ! रक्षक हुनुहोस् ॥ २८ ॥

श्रीरामचन्द्रचरणौ मनसा स्मरामि
श्रीरामचन्द्रचरणौ वचसा गृणामि ।
श्रीरामचन्द्रचरणौ शिरसा नमामि
श्रीरामचन्द्रचरणौ शरणं प्रपद्ये ॥ २९ ॥

अनु०—श्रीरामचन्द्रका चरण मनले संझन्छु। श्रीरामचन्द्रका चरणको वचनले उच्चारण गर्दछु। श्रीरामचन्द्रका चरणलाई शिरले नमस्कार गर्दछु र श्रीरामचन्द्रका चरणको शरणमा पर्दछु ॥ २९ ॥

माता रामो मत्पिता रामचन्द्रः,
स्वामी रामो मत्सखा रामचन्द्रः ।
सर्वस्वं मे रामचन्द्रो दयालु-
र्नाऽन्यं जाने नैव जाने न जाने ॥ ३० ॥

राम मेरा मातृस्वरूप, राम मेरा पितृस्वरूप, राम मेरा स्वामी, रामचन्द्र मेरा मित्रस्वरूप, दयालु रामचन्द्र मेरा सर्वस्व हुनुहुन्छ। म अरूलाई जान्दिनँ, जान्दिनँ नै, जान्दिनँ ॥ ३० ॥

दक्षिणे लक्ष्मणो यस्य, वामे तु जनकात्मजा ।
पुरतो मारुतिर्यस्य, तं वन्दे रघुनन्दनम् ॥ ३१ ॥

अनु०—जसको दाहिने तरफ लक्ष्मण, बायां तरफ सीताजी, अगाड़ि हनुमान् हुनुहुन्छ, त्यस्ता रघुनन्दन ( रामचन्द्र ) लाई अभिवादन गर्दछु ॥ ३१ ॥

लोकाऽभिरामं रणरङ्गधीरं, राजीवनेत्रं रघुवंशनाथम् ।
कारुण्यरूपं करुणाकरं तं श्रीरामचन्द्रं शरणं प्रपद्ये ॥३२॥

अनु०—लोकमा सुन्दर, युद्धरूप रङ्गस्थलमा धैर्ययुक्त, कमल जस्ता नेत्र भएका, रघुकुलका नाथ, करुणास्वरूप र करुणाका खानि, त्यस्ता श्रीरामचन्द्रको म शरणमा पर्दछु ॥ ३२ ॥

मनोजवं मारुततुल्यवेगं, जितेन्द्रियं बुद्धिमतां वरिष्ठम् ।
वातात्मजं वानरयूथमुख्यं, श्रीरामदूतं शरणं प्रपद्ये ॥३३॥

अनु०—मनको जस्तो र वायुको जस्तो वेग भएका, इन्द्रियहरूलाई जितेका, बुद्धिमान्हरूमा श्रेष्ठ, वायुदेवका पुत्र र वानरहरूका समूहमा मुख्य, यस्ता श्रीरामचन्द्रका दूत हनूमान्जीको शरणमा पर्दछु ॥ ३३ ॥

कूजन्तं रामरामेति मधुरं मधुराऽक्षरम् ।
आरुह्य कविताशाखां वन्दे वाल्मीकिकोकिलम् ॥ ३४ ॥

अनु०—कवितारूप शाखा ( हाँगा ) मा चढ़ेर मधुर अक्षर भएको राम राम भनेर मधुर स्वरले शब्द गर्ने भएका यस्ता वाल्मीकिरूप कोकिल ( कोइली ) लाई अभिवादन गर्दछु ॥ ३४ ॥

आपदामपहर्तारं, दातारं सर्वसम्पदाम् ।
लोकाऽभिरामं श्रीरामं भूयो भूयो नमाम्यहम् ॥ ३५ ॥

अनु०—आपत्ति हरूको अपहरण गर्ने, संपूर्ण सम्पत्तिहरूका दाता र लोकमा सुन्दर, श्रीरामलाई म वारंवार नमस्कार गर्दछु ॥ ३५ ॥

भर्जनं भवबीजानामर्जनं सुखसम्पदाम् ।
तर्जनं यमदूतानां रामरामेति गर्जनम् ॥ ३६ ॥

अनु०—संसाररूप बीज ( बिउ ) हरूलाई भुट्ने, सुखसम्पत्तिहरूको अर्जनरूप र यमदूतहरूलाई तर्जन गर्ने ( हप्काउने ) राम राम यस्तो गर्जन छ ॥ ३६ ॥

रामो राजमणिः सदा विजयते, रामं रमेशं भजे,
रामेणाऽभिहता निशाचरचमू रामाय तस्मै नमः ।
रामान्नाऽस्ति परायणं परतरं, रामस्य दासोऽस्म्यहं,
रामे चित्तलयः सदा भवतु मे, भो राम ! मामुद्धर ॥३७॥

अनु०—राजाहरूमा मणि ( रत्न ) राम सधैं विजय गर्नु हुन्छ । रमा ( लक्ष्मीरूपिणी सीता ) का पति रामको सेवा गर्छु, रामले राक्षस-सेनाको नाश गर्नु भयो, त्यस्ता रामलाई नमस्कार छ । रामभन्दा श्रेष्ठ आश्रयस्थान छैन । म रामको दास हुँ, राममा सधैं मेरो चित्तको लय ( स्थिति ) होस् । हे राम ! मेरो उद्धार गर्नु होस् ॥ ३७ ॥

रामरामेति रामेति रमे रामे मनोरमे !
सहस्रनाम तत्तुल्यं रामनाम वरानने !! ॥ ३८ ॥

अनु०—( महादेव पार्वतीलाई भन्नु हुन्छ ) हे सुन्दरि ! हे सुन्दर मुख भएकी ! राम, राम, राम भनेर म राममा रमाउंछु । रामनाम ( विष्णुको ) सहस्र नामको समान छ ॥ ३८ ॥

इति श्रीबुधकौशिकविरचितं श्रीरामरक्षास्तोत्रं
( सानुवादम् ) सम्पूर्णम् ।

श्रीः

# अथ श्रीरामसहस्रनामस्तोत्रम् ।

श्रीपार्वत्युवाच—

श्रोतुमिच्छाम्यहं देव ! तदेवं सर्वकामदम् ।
नाम्नां सहस्रं रामस्य ब्रूहि यद्यस्ति मे दया ॥ १ ॥

अनु०—श्रीपार्वती भन्नुहुन्छ—हे भगवन् ! सब इच्छा पूर्ण गर्ने श्रीरामको त्यो सहस्रनाम म सुन्न इच्छा गर्दछु, ममा दया छ भने भन्नुहोस् ॥ १ ॥

श्रीमहादेव उवाच—

अथ वक्ष्यामि ते देवि ! रामनामसहस्रकम् ।
शृणु चैकमनाः स्तोत्रं गुह्याद् गुह्यतमं महत् ॥ २ ॥

श्रीमहादेव भन्नुहुन्छ—हे देवि ! म गोप्य भन्दा अति गोप्य त्यो उत्तम रामसहस्रनामस्तोत्र अब भन्दछु, एकचित्त भएर सुन ॥ २ ॥

विनियोगः—

अस्य श्रीरामसहस्रनाम-मालामन्त्रस्य भगवानीश्वर ऋषिः, अनुष्टुप् छन्दः, श्रीरामः परमात्मा देवता, श्रीमन्महाविष्णुरिति वीजं, गुणभृन्निर्गुणो महानिति शक्तिः, संसारतारको राम इति मन्त्रः, सच्चिदानन्दविग्रह इति कीलकम्, अक्षयः पुरुषः साक्षीति कवचम्, अजेयः सर्वभूतात्मा इत्यस्त्रं, राजीवलोचनः श्रीमानिति ध्यानं, श्रीरामप्रीत्यर्थे दिव्यसहस्रनाम-जपे विनियोगः ।

करन्यासः—

श्रीरामचन्द्राय इति अङ्गुष्ठाभ्यां नमः ।
सीतापतये इति तर्जनीभ्यां नमः ।
रघुनाथाय इति मध्यमाभ्यां नमः ।
भरताऽग्रजाय इति अनामिकाभ्यां नमः ।
दशरथात्मजाय इति कनिष्ठिकाभ्यां नमः ।
हनूमत्प्रभवे इति करतलकरपृष्ठाभ्यां नमः ।

हृदयादिन्यासः—

श्रीरामचन्द्राय इति हृदयाय नमः ।
सीतापतये इति शिरसे स्वाहा ।
रघुनाथाय इति शिखायै वषट् ।
भरताग्रजाय इति कवचाय हुम् ।
दशरथात्मजाय इति नेत्रत्रयाय वौषट् ।
हनूमत्प्रभवे इति अस्त्राय फट् ।

ध्यानम् —

विज्ञानहेतुं विमलायताक्षं प्रज्ञानरूपं स्वसुखैकहेतुम् ।
श्रीरामचन्द्रं हरिमादिदेवं परात्परं राममहं भजामि ॥१॥
तत्त्वस्वरूपं पुरुषं पुराणं स्वतेजसा पूरितविश्वमेकम् ।
राजाऽधिराजं रविमण्डलस्थं विश्वेश्वरं राममहं भजामि ॥२॥

अनु०— विज्ञानका कारण, निर्मल र दीर्घ नेत्र भएका, प्रज्ञान-स्वरूप, आफ्नो सुखको एकमात्र कारण, आदिदेव, हरि ( विष्णुका अवतार ) पर भन्दा पनि पर श्रीरामचन्द्रको म भजन गर्दछु ॥ १ ॥

तत्त्वस्वरूप, पुराण ( प्राचीन ) पुरुष, आफ्नो तेजले संसारलाई पूर्ण गर्ने, मुख्य, राजाऽधिराज, सूर्यमण्डलमा रहेका श्रीरामको म भजन गर्दछु ॥ २ ॥

अथ रामसहस्रनामस्तोत्रम् ।

ॐ रामः श्रीमान्महाविष्णुर्जिष्णुर्देवहितावहः ।
तत्त्वात्मा तारकं ब्रह्म शाश्वतः सर्वसिद्धिदः ॥ १ ॥

अनु०—१ राम = योगीहरूका रमणका आधार । २ श्रीमान् = श्रीसम्पन्न । ३ महाविष्णु = महाविष्णु अथवा महान् व्यापक । ४ जिष्णु = जयशील । ५ देवहितावहः = देवताहरूको हित गर्ने । ६ तत्त्वात्मा = तत्त्वस्वरूप । ७ तारकम् = संसार तार्ने । ८ ब्रह्म = शुद्धचैतन्य । ९ शाश्वतः = नित्य । १० सर्वसिद्धिदः = समस्त सिद्धि दिने ॥ १ ॥

राजीवलोचनः श्रीमान् श्रीरामो रघुपुङ्गवः ।
रामचन्द्रः सदाचारो राजेन्द्रो जानकीपतिः ॥ २ ॥

अनु०—११ राजीवलोचन=कमलजस्ता नेत्र भएका । १२ श्रीमान्= शोभासंपन्न । १३ श्रीराम = श्रीयुक्त राम । १४ रघुपुङ्गव = रघुवंशमा श्रेष्ठ । १५ रामचन्द्र । १६ सदाचार = उत्तम आचार भएका । १७ राजेन्द्रः = राजाहरूमा इन्द्रजस्ता । १८ जानकीपति = सीताजीका स्वामी ॥ २ ॥

अग्रगण्यो वरेण्यश्च वरदः परमेश्वरः ।
जनार्दनो जिताऽमित्रः पराऽर्थैकप्रियोऽजनः ॥ ३ ॥

अनु०—१९ अग्रगण्य = अगाड़ि गणना गरिने, २० वरेण्य = मुख्य । २१ वरद=वर दिने । २२ परमेश्वरः=श्रेष्ठ स्वामी । २३ जनार्दन=

प्रलयकालमा सब प्राणिजनको संहार गर्ने । २४ जिताऽमित्र = अमित्र-(शत्रु) लाई जित्ने । २५ पराऽर्थैकप्रियः = परमाऽर्थका उपासकका मुख्य प्रिय (प्यारा) । २६ अजन = जन्मरहित अर्थात् नित्य ॥ ३ ॥

विश्वामित्रप्रियो दान्तः शत्रुजिच्छत्रुतापनः ।

सर्वज्ञः सर्वदेवादिः शरण्यो वालिमर्दनः ॥ ४ ॥

अनु०—२७ विश्वामित्रप्रिय=विश्वामित्र ऋषिका प्यारा । २८ दान्त= तपस्याको क्लेश सहने । २९ शत्रुजित् = शत्रुलाई जित्ने । ३० शत्रु-तापनः = शत्रुहरूलाई ताप गर्ने । ३१ सर्वज्ञ = सब विषय जान्ने । ३२ सर्वदेवादि = समस्त देवताहरूमा आदि । ३३ शरण्य = शरण-दिनमा समर्थ । ३४ वालिमर्दन = वालीलाई मर्दन गर्ने ॥ ४ ॥

ज्ञानभव्योऽपरिच्छेद्यो वाग्मी सत्यव्रतः शुचिः ।

ज्ञानगम्यो दृढप्रज्ञः खरध्वंसी प्रतापवान् ॥ ५ ॥

अनु०—३५ ज्ञानभव्य = ज्ञानमा कुशल । ३६ अपरिच्छेद्यः = छुट्याउन नसकिने । ३७ वाग्मी = बोल्न ज्यादै सिपालु । ३८ सत्य-व्रतः = साँचो बोल्ने व्रत लिएका । ३९ शुचिः=पवित्र । ४० ज्ञानगम्य= ज्ञानले पाइने । ४१ दृढप्रज्ञ = दृढ बुद्धि भएका । ४२ खरध्वंसी = खर राक्षसको ध्वंस गर्ने । ४३ प्रतापवान् = प्रतापी ॥ ५ ॥

द्युतिमानात्मवान् वीरो जितक्रोधोऽरिमर्दनः ।

विश्वरूपो विशालाक्षः प्रभुः परिवृढोऽधिपः ॥ ६ ॥

अनु०—४४ द्युतिमान् = अधिक कान्ति भएका । ४५ आत्मवान्= उत्तम स्वभाव भएका । ४६ वीरः = शूर । ४७ जितक्रोध = क्रोध जितेका । ४८ अरिमर्दन = शत्रुहरूको मर्दन गर्ने । ४९ विश्वरूप = विश्व (संसार) नै स्वरूप भएका । ५० विशालाक्ष=ठूला नेत्र भएका । ५१ प्रभु=समर्थ । ५२ परिवृढ=स्वामी । ५३ अधिपः=रक्षा गर्ने ॥ ६ ॥

ईशः खड्गधरः श्रीमान् कौशल्येयोऽनसूयकः ।
विपुलांसो महोरस्कः परमेष्ठी परायणः ॥ ७ ॥

अनु०—५४ ईश = ऐश्वर्य भएका । ५५ खड्धर=खड्ग (तरवार) लिएका । ५६ श्रीमान् = प्रशस्त सम्पत्ति भएका । ५७ कौशल्येय = कौशल्याका पुत्र । ५८ अनसूयकः = गुणमा दोषको आरोप नगर्ने । ५९ विपुलांस = ठूला काँध भएका । ६० महोरस्कः = चौड़ा छाती भएका । ६१ परमेष्ठी = उत्तम स्थानमा रहने । ६२ परायण = उत्तम गति भएका ॥ ७ ॥

सत्यव्रतः सत्यसन्धो गुरुः परमधार्मिकः ।
लोकज्ञो लोकवन्धुश्च लोकात्मा लोकहृत्प्रभुः ॥ ८ ॥

अनु०—६३ सत्यव्रतः = सत्यव्रत भएका । ६४ सत्यसन्ध = सत्य प्रतिज्ञा भएका । ६५ गुरु = उपदेश गर्ने । ६६ परमधार्मिकः= श्रेष्ठ धर्मात्मा । ६७ लोकज्ञ = लोकहरूलाई जान्ने । ६८ लोकवन्धु = लोकका वन्धु । ६९ लोकात्मा = लोकका आत्मस्वरूप । ७० लोकहृत्= प्रलय समयमा सब लोकको संहार गर्ने । ७१ प्रभु = स्वामी ॥ ८ ॥

अनादिर्भगवान् सेव्यो जितमायो रघूद्वहः ।
रामो दयाकरो दक्षः सर्वज्ञः सर्वपावनः ॥ ९ ॥

अनु०—७२ अनादि=आदि न भएका अर्थात् नित्य । ७३ भगवान्= छ प्रकारका ऐश्वर्य भएका । ७४ सेव्य = सेवनीय अर्थात् सेवाका योग्य । ७५ जितमाय = माया जितेका । ७६ रघूद्वह=रघुवंशका राजाहरूमा श्रेष्ठ । ७७ राम=आत्मविचारमा रमण गर्ने । ७८ दयाकर= दयाका खानि । ७९ दक्षः = चतुर । ८० सर्वज्ञ = सब विषय जान्ने । ८१ सर्वपावन = सबलाई पवित्र गर्ने ॥ ९ ॥

ब्रह्मण्यो नीतिमान् गोप्ता सर्वदेवप्रियो हरिः ।
सुन्दरः पीतवासाश्च सूत्रकारः पुरातनः ॥ १० ॥

अनु०—८२ ब्रह्मण्य = ब्रह्ममा अथवा वेदमा साधु । ८३ नीतिमान्= प्रशस्त नीति भएका । ८४ गोप्ता = रक्षा गर्ने । ८५ सर्वदेवप्रिय = संपूर्ण देवताहरूका प्यारा । ८६ हरिः = पापको हरण गर्ने । ८७ सुन्दर= राम्रा । ८८ पीतवासाः = पीताम्बर पहिरेका । ८९ सूत्रकार = लोकको सूत्र ( व्यवस्था ) गर्ने । ९० पुरातन = प्राचीन ( पुराना ) ॥ १० ॥

सौम्यो महर्षिः कोदण्डी सर्वज्ञः सर्वकोविदः ।
कपिसुग्रीववरदः सर्वपुण्याऽधिकप्रदः ॥ ११ ॥

अनु०—९१ सौम्य=सोम ( चन्द्रमा ) जस्ता सुन्दर । ९२ महर्षि= महान् ऋषि । ९३ कोदण्डी=कोदण्ड ( धनु ) लिएका । ९४ सर्वज्ञ=सब विषयका जानकार । ९५ सर्वकोविद=सब शास्त्रका पण्डित । ९६ कपि- सुग्रीववरद=वानर र सुग्रीवलाई वर दिने । ९७ सर्वपुण्याऽधिकप्रद= सब पुण्यहरूको अधिक दान गर्ने ॥ ११ ॥

भव्यो जिताऽरिषड्वर्गो महोदारोऽघनाशनः ।
सुकीर्तिरादिपुरुषः कान्तः पुण्यकृतागमः ॥ १२ ॥

अनु०—९८ भव्य=योग्य । ९९ जिताऽरिषड्वर्ग=काम, क्रोध, लोभ, मोह, मद र मात्सर्यरूप छ शत्रुहरूको समूहलाई जितेका । १०० महोदारः= ठूला दाता । १०१ अघनाशन=पापनाश गर्ने । १०२ सुकीर्ति=उत्तम कीर्ति भएका । १०३ आदिपुरुष=पहिला पुरुष । १०४ कान्त=सुन्दर । १०५ पुण्यकृतागम=पुण्यको आगम ( तन्त्र शास्त्र ) को रचना गर्ने ॥ १२ ॥

अकल्मषश्चतुर्बाहुः सर्वावासो दुरासदः ।
स्मितभाषी निवृत्तात्मा स्मृतिमान् वीर्यवान् प्रभुः ॥ १३ ॥

अनु०—१०६ अकल्मष=कल्मष (पाप) न भएका। १०७ चतुर्बाहु=चार बाहु भएका। १०८ सर्वावास=सबैका आवास ( वासस्थान अर्थात् आधार )। १०९ दुरासद=दुःखले पाइने। ११० स्मितभाषी=मुसुक्क हाँसेर बोल्ने। १११ निवृत्तात्मा=आत्मा ( भोगशरीर ) न भएका अर्थात् निराकार। ११२ स्मृतिमान्=प्रशस्त स्मरण भएका। ११३ वीर्यवान्=प्रशस्त बल भएका। ११४ प्रभु=समर्थ ॥ १३ ॥

धीरो दान्तो घनश्यामः सर्वयुद्धविशारदः।
आत्मज्ञो योगनिलयः सुमना लक्ष्मणाऽग्रजः ॥ १४ ॥

अनु०—११५ धीर=धैर्य भएका। ११६ दान्त=तपस्याको क्लेश सहने। ११७ घनश्याम=मेघ जस्ता श्यामवर्ण। ११८ सर्वयुद्धविशारद=सबै युद्धहरूमा निपुण। ११९ आत्मज्ञ=आत्मा जान्ने। १२० योगनिलय=यम, नियम आदि योगका अङ्गहरूका आधार। १२१ सुमनाः=उत्तम चित्त भएका अथवा देवस्वरूप। १२२ लक्ष्मणाऽग्रज=लक्ष्मणका अग्रज ( दाजु ) ॥ १४ ॥

सर्वतीर्थमयः शूरः सर्वयज्ञफलप्रदः।
यज्ञस्वरूपी यज्ञेशो जरामरणवर्जितः ॥ १५ ॥

अनु०—१२३ सर्वतीर्थमय=समस्त तीर्थस्वरूप। १२४ शूर=वीर। १२५ सर्वयज्ञफलप्रद=समस्त यज्ञहरूको फल दिने। १२६ यज्ञस्वरूपी=यज्ञस्वरूप भएका। १२७ यज्ञेश=यज्ञका स्वामी। १२८ जरामरणवर्जितः=जरा ( बुढ्याईं ) र मृत्युले रहित ॥ १५ ॥

वर्णाश्रमगुरुर्वर्णी शत्रुजित्पुरुषोत्तमः।
शिवलिङ्गप्रतिष्ठाता परमात्मा परात्परः ॥ १६ ॥

अनु०—१२९ वर्णाश्रमगुरुः=वर्ण (ब्राह्मण आदि) आश्रम (ब्रह्मचर्य आदि) उनका गुरु (उपदेशक)। १३० वर्णी=ब्रह्मचारी। १३१ शत्रुजित्=

शत्रुलाई जित्ने । १३२ पुरुषोत्तम=पुरुषहरूमा उत्तम । १३३ शिवलिङ्ग-प्रतिष्ठाता=शिवलिङ्गको प्रतिष्ठा गर्ने। १३४ परमात्मा=ईश्वर। १३५ परात् पर=पर ( सूक्ष्म ) भन्दा पनि पर ( सूक्ष्म ) ॥ १६ ॥

प्रमाणभूतो दुर्ज्ञेयः पूर्णः परपुरञ्जयः ।
अनन्तदृष्टिरानन्दो धनुर्वेदो धनुर्धरः ॥ १७ ॥

अनु०—१३६ प्रमाणभूत = प्रमाणस्वरूप। १३७ दुर्ज्ञेय = दुःखले जानिने। १३८ पूर्ण। १३९ परपुरञ्जय=शत्रुको शहर जित्ने। १४० अनन्तदृष्टि=अनन्त ( असंख्य ) दृष्टि ( नेत्र ) भएका। १४१ आनन्द= आनन्दस्वरूप। १४२ धनुर्वेद = धनुर्वेदस्वरूप। १४३ धनुर्धर = धनु धारण गर्ने ॥ १७ ॥

गुणाकरो गुणश्रेष्ठः सच्चिदानन्दविग्रहः ।
अभिवाद्यो महाकायो विश्वकर्मा विशारदः ॥१८॥

अनु०—१४४ गुणाकर = दया दाक्षिण्य आदि गुणहरूका खजाना। १४५ गुणश्रेष्ठ = गुणहरूले श्रेष्ठ। १४६ सच्चिदानन्दविग्रह=सत्, चित् ( चैतन्य ) र आनन्द नै शरीर भएका। १४७ अभिवाद्य=अभिवादनका योग्य। १४८ महाकाय=ठूलो काय (शरीर) भएका। १४९ विश्वकर्मा=विश्व ( संसार ) नै जसको कर्मस्वरूप छ। १५० विशारद = विद्वान् ॥ १८ ॥

विनीतात्मा वीतरागस्तपस्वीशो जनेश्वरः ।
कल्याणप्रकृतिः सर्वः सर्वेशः सर्वकामदः ॥ १९ ॥

अनु०—१५१ विनीतात्मा = विनीत ( नम्र ) आत्मा ( स्वभाव ) भएका। १५२ वीतराग = राग ( विषयको अभिलाष ) न भएका। १५३ तपस्वीश = तपस्वीहरूका स्वामी। १५४ जनेश्वरः = राजा। १५५ कल्याणप्रकृति = कल्याणपूर्ण प्रकृति ( राज्यका अङ्ग ) भएका।

१५६ सर्व = पूर्णस्वरूप। १५७ सर्वेश = सबका स्वामी। १५८ सर्वकामदः = संपूर्ण इच्छा पूर्ण गर्ने ॥ १९ ॥

अक्षरः पुरुषः साक्षी केशवः पुरुषोत्तमः ।
लोकाऽध्यक्षो महाकायो विभीषणवरप्रदः ॥ २० ॥

अनु०—१५९ अक्षरः=कूटस्थ अर्थात् राशि (समूह) रूपले रहेका। १६० पुरुष=आदि पुरुष। १६१ साक्षी=समस्त कर्मका साक्षी (द्रष्टा)। १६२ केशव=सुन्दर केश भएका। १६३ पुरुषोत्तम=पुरुषहरूमा उत्तम। १६४ लोकाऽध्यक्षः = लोकका स्वामी। १६५ महाकाय=ठूलो काय (शरीर) भएका। १६६ विभीषणवरप्रद=विभीषणलाई वर दिने ॥२०॥

अनन्तविग्रहो ज्योतिर्हनूमत्प्रभुरक्षयः ।
भ्राजिष्णुः सहनो भोक्ता सत्यवादी बहुश्रुतः ॥ २१ ॥

अनु०—१६७ अनन्तविग्रहः=असंख्य शरीर भएका। १६८ ज्योतिः=प्रकाशस्वरूप। १६९ हनूमत्प्रभु=हनूमान्का मालिक। १७० अक्षय=क्षय (नाश) न भएका। १७१ भ्राजिष्णुः=अलङ्कार आदिले शोभित हुने। १७२ सहन=क्षमागर्ने। १७३ भोक्ता=भोग गर्ने। १७४ सत्यवादी=सत्य बोल्ने। १७५ बहुश्रुतः=धेरै शास्त्र पढेका ॥ २१ ॥

सुखदः कारणं कर्ता भवबन्धविमोचकः ।
देवचूडामणिर्नेता ब्रह्मण्यो ब्रह्मवर्द्धनः ॥ २२ ॥

अनु०—१७६ सुखद=सुख दिने। १७७ कारण=हेतुस्वरूप। १७८ कर्ता=जगत्का रचयिता। १७९ भवबन्धविमोचक=भव (संसार) को बन्धन छुटाउने। १८० देवचूडामणि=देवताका शिरका मणि जस्ता। १८१ नेता=संसारका नायक। १८२ ब्रह्मण्य=तपस्या गर्न समर्थ। १८३ ब्रह्मवर्द्धन=ब्रह्म (वेद, तत्त्व वा तपस्या) को वृद्धि गर्ने ॥ २२ ॥

संसारतारको रामः सर्वदुःखविमोक्षकृत् ।
विद्वत्तमो विश्वकर्ता विश्वहर्ता च विश्वधृक्।। २३ ।।

अनु०—१८४ संसारतारक = संसारबाट तार्ने। १८५ राम। १८६ सर्वदुःखविमोक्षकृत्=समस्त दुःखहरू छुटाउने। १८७ विद्वत्तमः=ठूला विद्वान्। १८८ विश्वकर्ता=विश्व ( संसार ) का रचयिता। १८९ विश्वहर्ता=संसारको हरण गर्ने। १९० विश्वधृक्=संसारलाई जित्ने ।।२३।।

नित्यो नियतकल्याणः सीताशोकविनाशनः ।
काकुत्स्थः पुण्डरीकाक्षो विश्वामित्रभयाऽपहः ।। २४ ।।

अनु०—१९१ नित्य=सनातन। १९२ नियतकल्याण=निश्चितरूपले कल्याणस्वरूप। १९३ सीताशोकविनाशनः = सीताजीको शोकको विनाश गर्ने। १९४ काकुत्स्थ = ककुत्स्थवंशमा उत्पन्न। १९५ पुण्डरीकाक्ष=पुण्डरीक ( सेता कमल ) जस्ता नेत्र भएका। १९६ विश्वामित्रभयाऽपहः = विश्वामित्रको भयको नाश गर्ने।। २४।।

मारीचमथनो रामो विराधवधपण्डितः ।
दुःस्वप्ननाशनो रम्यः किरीटी त्रिदशाऽधिपः ।। २५ ।।

अनु०—१९७ मारीचमथन=मारीचलाई मथन (संहार) गर्ने। १९८ राम। १९९ विराधवधपण्डित=विराधको संहारमा पण्डित। २०० दुःस्वप्ननाशन=दुःस्वप्नको नाश गर्ने। २०१ रम्यः=सुन्दर। २०२ किरीटी=किरीट ( मुकुट ) को धारण गर्ने। २०३ त्रिदशाऽधिप=त्रिदश- ( देवता ) हरूका स्वामी ।। २५ ।।

महाधनुर्महाकायो भीमो भीमपराक्रमः ।
तत्त्वस्वरूपी तत्त्वज्ञस्तत्त्ववादी सुविक्रमः ।। २६ ।।

अनु०—२०४ महाधनुः=ठूलो धनु भएका। २०५ महाकाय=ठूलो शरीर भएका। २०६ भीम=भयङ्कर। २०७ भीमपराक्रम=भयङ्कर पराक्रम

भएका । २०८ तत्त्वस्वरूपी=तत्त्वस्वरूप भएका । २०९ तत्त्वज्ञ=तत्त्वका जानकार । २१० तत्त्ववादी=तत्त्व भन्ने । २११ सुविक्रम=उत्तम पराक्रम भएका ॥ २६ ॥

भूतात्मा भूतकृत् स्वामी कालज्ञानी महापटुः ।

अनिर्विण्णो गुणग्रामो निष्कलङ्कः कलङ्कहा ॥ २७ ॥

अनु०—२१२ भूतात्मा=पृथिवी आदि भूतस्वरूप । २१३ भूतकृत्=पृथिवी आदि भूतको रचना गर्ने । २१४ स्वामी=मालिक । २१५ कालज्ञानी=कालका ज्ञान भएका । २१६ महापटु=अत्यन्त कुशल । २१७ अनिर्विण्ण=विरक्त नभएका । २१८ गुणग्राम=दया दाक्षिण्य आदि गुणका समूहरूप । २१९ निष्कलङ्क = कलङ्क नभएका । २२० कलङ्कहा=कलङ्कको नाश गर्ने ॥ २७ ॥

स्वभावभद्रः शत्रुघ्नः केशवः स्थाणुरीश्वरः ।

भूतादिः शम्भुरादित्यः स्थविष्ठः शाश्वतो ध्रुवः॥ २८ ॥

अनु०—२२१ स्वभावभद्र = स्वभावले नै कल्याणस्वरूप । २२२ शत्रुघ्न=शत्रुहरूको संहार गर्ने । २२३ केशव=सुन्दर केश भएका । २२४ स्थाणु=स्थिर, अथवा शिवस्वरूप । २२५ ईश्वरः=जगत्का स्वामी । २२६ भूतादि=पृथिवी आदि भूतका आदि । २२७ शम्भु=सुखस्वरूप अथवा शिवस्वरूप । २२८ आदित्य=देवता अथवा सूर्यस्वरूप । २२९ स्थविष्ठः=अत्यन्त स्थूल (ठूला) । २३० शाश्वत=नित्य । २३१ ध्रुव=स्थिर ॥ २८ ॥

कवची कुण्डली चक्री खड्गी भक्तजनप्रियः ।

अमृत्युर्जन्मरहितः सर्वजित् सर्वगोचरः ॥ २९ ॥

अनु०—२३२ कवची=कवच धारण गरेका । २३३ कुण्डली=कुण्डल (चौगढ़ी) पहिरेका । २३४ चक्री=सुदर्शन चक्र लिएका । २३५ खड्गी=

खड्ग ( तर्वार ) भिरेका। २३६ भक्तजनप्रिय=भक्त जनका प्यारा। २३७ अमृत्यु=मरण नभएका। २३८ जन्मरहित=जन्म नभएका। २३९ सर्वजित्=सबलाई जित्ने। २४० सर्वगोचर=सबै ठाउँमा ग्राह्य भएका ॥ २९ ॥

अनुत्तमोऽप्रमेयात्मा सर्वादिर्गुणसागरः ।
समः समात्मा समगो जटामुकुटमण्डितः ॥ ३० ॥

अनु० –२४१ अनुत्तम = सबै भन्दा उत्तम। २४५ अप्रमेयात्मा= प्रमाणबाट स्वरूप छुट्याउन नसकिने। २४३ सर्वादि=सबका आदि। २४४ गुणसागर=दया दाक्षिण्य आदि गुणका समुद्र। २४५ सम=सबैमा समान। २४६ समात्मा=सबैमा सम आत्मा ( बुद्धि ) भएका। २४७ समग=सबैमा जाने ( व्याप्त )। २४८ जटामुकुटमण्डित=जटा र मुकुटले भूषित ॥ ३० ॥

अजेयः सर्वभूतात्मा विष्वक्सेनो महातपाः ।
लोकाऽध्यक्षो महाबाहुरमृतो वेदवित्तमः ॥ ३१ ॥

अनु०—२४९ अजेय=कसैले नजितिने। २५० सर्वभूतात्मा=सबै पृथिवी आदि तत्वमा स्वरूप भएका। २५१ विष्वक्सेन=चारौं तरफ सेना ( फौज ) भएका अथवा विष्णुस्वरूप। २५२ महातपाः = ठूलो तपस्या गरेका। २५३ लोकाऽध्यक्षः=समस्त लोकका स्वामी। २५४ महाबाहु=दीर्घ बाहु भएका। २५५ अमृत=मरणरहित। २५६ वेदवित्तम= सबै वेद जान्नेहरूमा उत्तम ॥ ३१ ॥

सहिष्णुः सद्गतिः शास्ता विश्वयोनिर्महाद्युतिः ।
अतीन्द्र ऊर्जितः प्रांशुरुपेन्द्रो वामनो बलिः ॥ ३२ ॥

अनु०—२५७ सहिष्णु=सहन गर्ने। २५८ सद्गति=उत्तम गति ( गमन ) भएका। २५९ शास्ता = शासन गर्ने। २६० विश्वयोनि=

संसारका कारण। २६१ महाद्युति = ठूलो द्युति ( कान्ति ) भएका। २६२ अतीन्द्र = इन्द्रभन्दा ठूला। २६३ ऊर्जित=बल भएका। २६४ प्रांशु=अग्ला। २६५ उपेन्द्र=इन्द्रको समीप रहने अथवा विष्णुस्वरूप। २६६ वामन=वामन अवतार धारण गरेका। २६७ बलि=बलिस्वरूप ॥ ३२ ॥

धनुर्वेदो विधाता च ब्रह्मा विष्णुश्च शङ्करः।
हंसो मरीचिर्गोविन्दो रत्नगर्भो महाद्युतिः ॥ ३३ ॥

अनु०—२६८ धनुर्वेद=धनुर्वेदस्वरूप। २६९ विधाता=विधान गर्ने अथवा ब्रह्मस्वरूप। २७० ब्रह्मा=प्रजाहरूलाई बढ़ाउने अथवा ब्रह्मस्वरूप अथवा ब्राह्मण। २७१ विष्णु=व्यापक अथवा विष्णुस्वरूप। २७२ शङ्कर= कल्याण अथवा सुख गर्ने अथवा शिवस्वरूप। २७३ हंस=सूर्यस्वरूप। २७४ मरीचि = ऋषिविशेष वा किरणस्वरूप। २७५ गोविन्द=विष्णु-स्वरूप। २७६ रत्नगर्भ = गर्भमा रत्न भएका। २७७ महाद्युति = ठूलो द्युति ( कान्ति ) भएका ॥ ३३ ॥

व्यासो वाचस्पतिः सर्वदृक् पिताऽसुरमर्दनः।
जानकीवल्लभः पूज्यः प्रकटी प्रीतिवर्द्धनः ॥ ३४ ॥

अनु०—२७८ व्यास=विस्तार गर्ने अथवा व्यास ( मुनि ) स्वरूप। २७९ वाचस्पति = वचनका स्वामी अथवा बृहस्पति ( ऋषि ) स्वरूप। २८० सर्वदृक् = सब पदार्थ देख्ने। २८१ पिता = सब लोकका जनक। २८२ असुरमर्दन = असुर ( देवताका विरोधी ) हरूलाई मर्दन गर्ने। २८३ जानकीवल्लभ = जानकी ( जनकपुत्री अर्थात् सीता ) का प्रिय। २८४ पूज्य=पूजनीय। २८५ प्रकटी=प्रकट भएका। २८६ प्रीतिवर्द्धन= प्रीति बढ़ाउने ॥ ३४ ॥

सम्भवोऽतीन्द्रियो वेद्यो निर्देश्यो जाम्बवत्प्रभुः।
मदनो मन्मथो व्यापी विश्वरूपो निरञ्जनः ॥ ३५ ॥

अनु०—२८७ संभव = जगत्का कारणस्वरूप। २८८ अतीन्द्रिय= इन्द्रिय ( नेत्र आदि ) द्वारा ग्रहण गर्न नसकिने। २८९ वेद्य=ज्ञानका योग्य। २९० निर्देश्य=नामले कीर्तन गर्न योग्य। २९१ जाम्बवत्प्रभु= जाम्बवान्का स्वामी। २९२ मदन = हर्ष उत्पन्न गर्ने। २९३ मन्मथ= कामदेवस्वरूप। २९४ व्यापी=व्यापक। २९५ विश्वरूप=विश्व (संसार) नै स्वरूप भएका। २९६ निरञ्जन=उपाधि नभएका।

नारायणो घृणी साधुर्जटायुप्रीतिवर्द्धनः।
नैकरूपो जगन्नाथः सुरकार्यहितप्रभुः॥ ३६ ॥

अनु०—२९७ नारायण=जलशायी अथवा विष्णुस्वरूप। २९८ घृणी=घृणा ( दया ) भएका अर्थात् दयालु। २९९ साधु=सज्जन। ३०० जटायुप्रीतिवर्द्धन=जटायुको प्रीति बढ़ाउने। ३०१ नैकरूप=अनेक रूप भएका। ३०२ जगन्नाथ=जगत्का नाथ ( स्वामी )। ३०३ सुरकार्य-हितप्रभु=देवताहरूका कार्य र हितमा समर्थ॥ ३६॥

जितक्रोधो जिताऽरातिः प्लवगाऽधिपराज्यदः।
मुकुन्दः सुभुजो नैकमायो भव्यः प्रमोदनः॥ ३७ ॥

अनु०—३०४ जितक्रोध=क्रोध ( रिस ) जितेका। ३०५ जिताऽराति=अराति ( शत्रु ) हरूलाई जितेका। ३०६ प्लवगाऽधिपराज्यदः= प्लवगाऽधिप ( वानरका स्वामी अर्थात् सुग्रीव ) लाई राज्य दिने। ३०७ मुकुन्द=सुख अथवा मोक्ष दिने अथवा विष्णुस्वरूप। ३०८ सुभुजः= सुन्दर बाहु भएका। ३०९ नैकमाय=अनेक माया भएका। ३१० भव्य= मङ्गलस्वरूप। ३११ प्रमोदन=हर्ष उत्पन्न गर्ने॥ ३७॥

चण्डांऽशुः सिद्धसङ्कल्पः शरणागतवत्सलः।
अगदो रोगहर्ता च मन्त्रविन्मन्त्रपावनः॥ ३८ ॥

अनु०—३१२ चण्डांऽशु=सूर्यस्वरूप। ३१३ सिद्धसङ्कल्प=सङ्कल्प (मनले चिताएको कर्म) सिद्ध (सफल) भएका। ३१४ शरणागतवत्सल=शरणमा आएका भक्तहरूमा स्नेह गर्ने। ३१५ अगद=रोग नभएका अथवा औषधस्वरूप। ३१६ रोगहर्ता=रोगको हरण गर्ने। ३१७ मन्त्र-वित्=मन्त्र जान्ने। ३१८ मन्त्रपावन = आफ्नो नामरूप मन्त्रले पवित्र गर्ने॥ ३८॥

सौमित्रिवत्सलो धुर्यो व्यक्ताऽव्यक्तस्वरूपधृक्।
निःस्पृहो ग्रामणीः श्रीमाननुकूलः प्रियंवदः॥ ३९॥

अनु०—३१९ सौमित्रिवत्सल=सौमित्रि (सुमित्राका पुत्र लक्ष्मण) मा स्नेह गर्ने। ३२० धुर्य=कार्य गर्न धुरन्धर। ३२१ व्यक्ताऽव्यक्तस्वरूप-धृक्=व्यक्त (स्पष्ट अर्थात् देखिने) र अव्यक्त (अस्पष्ट अर्थात् न-देखिने) स्वरूपले जित्ने। ३२२ निःस्पृह=कुनै कुरामा पनि स्पृहा (इच्छा) नभएका। ३२३ ग्रामणी=स्वामी। ३२४ श्रीमान्=शोभा अथवा सम्पत्ति भएका। ३२५ अनुकूल=सबैका अनुकूल। ३२६ प्रियं-वद=प्यारो वचन बोल्ने॥ ३९॥

अक्षयः सात्त्विको धीरो वीरासनविशारदः।
ज्येष्ठः सर्वगुणोपेतः शक्तिमांस्ताटकाऽन्तकः॥ ४०॥

अनु०—३२७ अक्षय=क्षय (नाश) ले रहित। ३२८ सात्त्विक=सत्त्वगुणले आचरण गर्ने। ३२९ धीर=विद्वान्। ३३० वीरासनविशारद=वीरासनमा निपुण अथवा वीर शत्रुहरूलाई हटाउन निपुण। ३३१ ज्येष्ठ=श्रेष्ठ अथवा सबैमा जेठा। ३३२ सर्वगुणोपेत=सबै गुणहरूले युक्त। ३३३ शक्तिमान्=प्रशस्त शक्ति (सामर्थ्य) भएका। ३३४ ताटकाऽ-न्तक=ताटका राक्षसीका संहारक॥ ४०॥

वैकुण्ठः प्राणिनां प्राणः कमठः कमलाऽधिपः।
गोवर्द्धनधरो मत्स्यरूपः कारुण्यसागरः॥ ४१॥

अनु०—३३५ वैकुण्ठ=वैकुण्ठ (विष्णु) स्वरूप। ३३६ प्राणिनां प्राणः=प्राणीहरूका प्राणस्वरूप। ३३७ कमठ=कच्छप रूपले लोकको धारण गर्ने। ३३८ कमलाऽधिपः=कमला (लक्ष्मी) स्वरूपिणी सीताका स्वामी। ३३९ गोवर्द्धनधरः=द्वापर युगमा गोवर्द्धन पर्वत धारण गर्ने कृष्णस्वरूप। ३४० मत्स्यरूप=मत्स्य (माछा) को रूप लिएर वेदको उद्धार गर्ने। ३४१ कारुण्यसागर=दयाका सागर (समुद्र)॥ ४१॥

कुम्भकर्णप्रभेत्ता च गोपीगोपालसंवृतः।
मायावी स्वापनो व्यापी रैणुकेयबलाऽपहः॥ ४२॥

अनु०—३४२ कुम्भकर्णप्रभेत्ता=कुम्भकर्णलाई भेदन गर्ने। ३४३ गोपीगोपालसंवृतः=कृष्णाऽवतारमा गोपी र गोपालहरूले घेरिएका। ३४४ मायावी=माया (आफ्नो शक्ति) ले युक्त। ३४५ स्वापन=प्रलय-कालमा सबलाई सुताउने। ३४६ व्यापी=व्यापक। ३४७ रैणुकेय-बलाऽपह=रैणुकेय (रेणुकाका पुत्र अर्थात् परशुराम) को बल हटाउने॥ ४२॥

पिनाकमथनो वन्द्यः सम्मतो गरुडध्वजः।
लोकत्रयाश्रयो लोकभरतो भरताऽग्रजः॥ ४३॥

अनु०—३४८ पिनाकमथन=महादेवको पिनाक धनुको मथन (भङ्ग) गर्ने ३४९ वन्द्य=स्तुतिका योग्य ३५० संमत=सबैले इच्छा गरिएका। ३५१ गरुडध्वज=ध्वजमा गरुडको मूर्ति भएका अर्थात् विष्णु-स्वरूप। ३५२ लोकत्रयाश्रय=स्वर्ग, मर्त्य र पाताल यी तीन लोकका आश्रय (आधार)। ३५३ लोकभरत=लोकको भारको हरण गर्ने। ३५४ भरताऽग्रज=भरतका दाजु॥ ४३॥

श्रीधरस्तद्गतिर्लोकसाक्षी नारायणो विभुः।
मनोवेगी मनोरूपी पूर्णः पुरुषपुङ्गवः॥ ४४॥

अनु०—३५५ श्रीधर = लक्ष्मी धारण गर्ने । ३५६ तद्गतिः = प्रसिद्ध गति भएका । ३५७ लोकसाक्षी = लोकका साक्षी (द्रष्टा) ३५८ नारायण = जलशायी, अर्थात् विष्णुस्वरूप । ३५९ विभु = व्यापक । ३६० मनोवेगी = मनको जस्तो वेग भएका । ३६१ मनोरूपी = मनःस्वरूप अर्थात् सूक्ष्म ३६२ पूर्ण = समग्र अर्थात् खण्डित नभएका । ३६३ पुरुषपुङ्गव = पुरुषहरूमा श्रेष्ठ ॥ ४४ ॥

यदुश्रेष्ठो यदुपतिर्भूतावासः सविक्रमः ।
तेजोधराधरोऽव्यग्रश्चतुर्मूर्तिर्महानिधिः ॥ ४५ ॥

अनु०—३६४ यदुश्रेष्ठ = कृष्णाऽवतारमा यदुकुलमा श्रेष्ठ । ३६५ यदुपति = कृष्णाऽवतारमा यदुवंशीहरूका स्वामी । ३६६ भूतावास = समस्त प्राणीहरूका आधार । ३६७ सविक्रम = विक्रम ( पराक्रम ) ले युक्त । ३६८ तेजोधराधर = तेजका धराधर अर्थात् पर्वतस्वरूप । ३६९ अव्यग्र = आकुल नभएका । ३७० चतुर्मूर्ति = दशरथका प्रासादमा राम, भरत, लक्ष्मण र शत्रुघ्न चार मूर्ति ले प्रकट भएका, अथवा वासुदेव सङ्कर्षण, प्रद्युम्न र अनिरुद्ध चार व्यूह भएका । ३७१ महानिधिः = ठूलो निधिस्वरूप ॥ ४५ ॥

चाणूरमर्दनो वन्द्यः शान्तो भरतवन्दितः ।
शब्दाऽतिगो गभीरात्मा कोमलाऽङ्गः प्रजागरः ॥ ४६ ॥

अनु०— ३७२ चाणूरमर्दन = कृष्णाऽवतारमा कंसको पहलवान चाणूरलाई मर्दन गर्ने । ३७३ वन्द्य = वन्दन ( अभिवादन ) गर्न योग्य । ३७४ शान्त = अन्तः करणलाई वशमा राख्ने । ३७५ भरतवन्दित = भरतले स्तुति गरिएका । ३७६ शब्दाऽतिगः = शब्द ( वचन ) का अविषय । ३७७ गभीरात्मा = गम्भीर स्वभाव भएका । ३७८ कोमलाऽङ्ग = कोमल अङ्ग भएका । ३७९ प्रजागर = जागरणस्वरूप ॥ ४६ ॥

लोकगर्भः शेषशायी क्षीराऽब्धिनिलयोऽनिलः ।
आत्मयोनिरदीनात्मा सहस्राऽर्चिः सहस्रपात् ॥ ४७ ॥

अनु०—३८० लोकगर्भ = लोकहरूका गर्भस्वरूप । ३८१ शेषशायी = शेषनागमा शयन गर्ने । ३८२ क्षीराऽब्धिनिलयः = क्षीरसमुद्रमा शयन गर्ने । ३८३ अनिलः = वायुस्वरूप ( सूक्ष्म ) । ३८४ आत्मयोनि = समस्त आत्माका कारणरूप । ३८५ अदीनात्मा = दीन स्वरूप नभएका । ३८६ सहस्राऽर्चिः = सूर्यस्वरूप ( तेजस्वी ) । ३८७ सहस्रपात् = विश्वरूप लिएर हजार पाउ भएका ॥ ४७ ॥

पर्जन्यः कुमुदो भूतावासः कमललोचनः ।
श्रीवत्सवक्षाः श्रीरामो वीरहा लक्ष्मणाऽग्रजः ॥ ४८ ॥

अनु०—३८८ पर्जन्यः = वृष्टि गर्ने मेघरूप । ३८९ कुमुदः = पृथिवीलाई हर्ष गर्ने । ३९० भूतावास = पृथिवी आदि भूतका आधार । ३९१ कमललोचन = कमल जस्ता नेत्र भएका । ३९२ श्रीवत्सवक्षाः = छातीमा श्रीवत्स चिह्न भएका । ३९३ श्रीराम । ३९४ वीरहा = वीर शत्रुहरूको संहार गर्ने । ३९५ लक्ष्मणाऽग्रज = लक्ष्मणका अग्रज ( दाजु ) ॥ ४८ ॥

लोकाऽभिरामो लोकाऽरिमर्दनः सेवकप्रियः ।
सनातनतमो मेघश्यामलो राक्षसाऽन्तकः ॥ ४९ ॥

अनु०—३९६ लोकाऽभिराम = लोकमा सुन्दर । ३९७ लोकाऽरिमर्दन = लोकका शत्रु ( रावण आदि ) को मर्दन गर्ने । ३९८ सेवकप्रिय = आफ्ना सेवकहरूका प्यारा । ३९९ सनातनतम = अत्यन्त प्राचीन । ४०० मेघश्यामल = मेघ झैं श्यामवर्ण । ४०१ राक्षसाऽन्तक = राक्षसहरूको अन्त गर्ने ( यमस्वरूप ) ॥ ४९ ॥

दिव्यायुधधरः श्रीमानप्रमेयो जितेन्द्रियः ।
भूदेववन्द्यो जनकप्रियकृत् प्रपितामहः ॥ ५० ॥

अनु०—४०२ दिव्यायुधधर=दिव्य ( अलौकिक ) हथियार लिएका ४०३ श्रीमान्=प्रशस्त सम्पत्ति भएका। ४०४ अप्रमेय=प्रत्यक्ष आदि प्रमाणहरूबाट छुट्याउन नसकिने। ४०५ जितेन्द्रिय=इन्द्रियहरूलाई जितेका। ४०६ भूदेववन्द्य=भूदेव ( ब्राह्मण ) हरूलेस्तु ति गर्न योग्य। ४०७ जनकप्रियकृत्=जनक ( आफ्ना पिता दशरथ वा आफ्ना श्वशुर)-को प्रिय गर्ने। ४०८ प्रपितामह=सबै लोकका बराजुजस्ता ॥ ५० ॥

उत्तमः सात्त्विकः सत्यः सत्यसन्धस्त्रिविक्रमः ।
सुलभः सुव्रतः सूक्ष्मः सुघोषः सुखदः सुखी ॥ ५१ ॥

अनु०—४०९ उत्तम=श्रेष्ठ। ४१० सात्त्विक=सत्त्वगुणले आचरण गर्ने। ४११ सत्य=सत्यस्वरूप। ४१२ सत्यसन्ध=सत्य (साँचो) सन्धा ( प्रतिज्ञा ) भएका। ४१३ त्रिविक्रम=तीनै लोकमा पाउको गति भएका अर्थात् वामनस्वरूप। ४१४ सुलभ=भक्तहरूका सुप्राप्य। ४१५ सुव्रत=सुन्दर कर्म भएका। ४१६ सूक्ष्म=परमाणु झैं सूक्ष्म। ४१७ सुघोष=मनोहर घोष ( शब्द ) भएका। ४१८ सुखद=सुख दिने। ४१९ सुखी=सुख भएका ॥ ५१ ॥

दामोदरोऽच्युतः शार्ङ्गी वामनो मथुराऽधिपः ।
देवकीनन्दनः शौरिः शार्ङ्गी कैटभमर्दनः ॥ ५२ ॥

अनु०—४२० दामोदर=माला धारण गरेका अथवा दाम ( लोक-हरूको नाम ) जसको उदरभित्र छन्, अथवा कृष्णाऽवतारमा यशोदाले बाँध्दा जसको उदरमा दाम ( डोरी ) को चिह्न छ। ४२१ अच्युत=कहीं पनि च्युत ( भ्रष्ट ) न भएका। ४२२ शार्ङ्गी=शार्ङ्ग ( धनु ) लिएका। ४२३ वामन=वामन अवतार लिएका। ४२४ मथुराऽधिप=मथुराका स्वामी। ४२५ देवकीनन्दन=कृष्णाऽवतारमा देवकीका नन्दन ( पुत्र )। ४२६ शौरि=कृष्णाऽवतारमा शूरवंशमा उत्पन्न। ४२७ शार्ङ्गी=विष्णु-स्वरूप। ४२८ कैटभमर्दन=कैटभ ( दैत्य ) लाई मर्दन गर्ने ॥ ५२ ॥

सप्ततालप्रभेत्ता च मातृवंशप्रवर्द्धनः ।
कालस्वरूपी कालात्मा कालः कल्याणदः प्रभुः ॥ ५३ ॥

अनु० - ४२९ सप्ततालप्रभेत्ता = सात ताल वृक्षहरूको भेदन गर्ने । ४३० मातृवंशप्रवर्द्धनः = माता (कौशल्या वा गाइ) को वंशको वृद्धि गर्ने । ४३१ कालस्वरूपी = कालरूप भएका । ४३२ कालात्मा = कालस्वरूप । ४३३ काल = समयस्वरूप । ४३४ कल्याणद = कल्याण दिने । ४३५ प्रभु = स्वामी ॥ ५३ ॥

संवत्सर ऋतुः पक्षो हायनो दिवसो युगः ।
भव्यो विविक्तो निर्लेपस्तपोव्यापी निराकुलः ॥ ५४ ॥

अनु०—४३६ संवत्सर = वर्षरूप । ४३७ ऋतु = वसन्त आदि ऋतुस्वरूप । ४३८ पक्ष = शुक्ल र कृष्णपक्षस्वरूप । ४३९ हायनः = वर्षस्वरूप । ४४० दिवस = दिनस्वरूप । ४४१ युग = सत्य आदि युगस्वरूप । ४४२ भव्य = कुशल । ४४३ विविक्त = पवित्र । ४४४ निर्लेप = मायाको लेप (संपर्क) नभएका । ४४५ तपोव्यापी = तपस्याले व्यापक । ४४६ निराकुल = आकुल नभएका ॥ ५४ ॥

अनादिनिधनः सर्वलोकपूज्यो निरामयः ।
हंसो रसज्ञः सारज्ञो लोकसारो रसात्मकः ॥ ५५ ॥

अनु०—अनादिनिधनः = आदि र अन्त्य नभएका । ४४८ सर्वलोकपूज्य = सब जनाले पूजनीय । ४४९ निरामय = आमय (रोग) ले रहित । ४५० हंस = विष्णुस्वरूप अथवा सूर्यस्वरूप । ४५१ रसज्ञः = रसका जानकार । ४५२ सारज्ञ = सार जान्ने । ४५३ लोकसार = लोकका सार अंश । ४५४ रसात्मक = शृङ्गार आदि रसस्वरूप ॥ ५५ ॥

सर्वदुःखाऽतिगो विद्याराशिः परमगोचरः ।
शेषो विशेषो विगतकल्मषो रघुपुङ्गवः ॥ ५६ ॥

अनु०—४४५ सर्वदुःखाऽतिग = सब दुःखहरूको लङ्घन गरेका। ४५६ विद्याराशिः = विद्याहरूका राशि ( समूह ) स्वरूप। ४५७ परम-गोचर = श्रेष्ठ पुरुषले ( मात्र ) ग्राह्य हुने। ४५८ शेष = शेषनागस्वरूप। ४५९ विशेष = विशिष्ट पुरुष। ४६० विगतकल्मष = कल्मष ( पाप ) ले रहित। ४६१ रघुपुङ्गव = रघुवंशमा श्रेष्ठ॥ ५६॥

वर्णश्रेष्ठो वर्णभावो वर्णी वर्णगणेश्वरः।
सर्वसाक्षी गुणश्रेष्ठो देवाऽसुरवरप्रदः॥ ५७॥

अनु०—४६२ वर्णश्रेष्ठ = वर्ण ( ब्राह्मण ) आदिमा श्रेष्ठ। ४६३ वर्ण-भाव = वर्ण ( ब्राह्मण ) आदिको रक्षामा भाव ( क्रिया ) गर्ने। ४६४ वर्णी = सुन्दर वर्ण भएका। ४६५ वर्णगणेश्वर = वर्ण ( ब्राह्मण आदि ) का समूहका स्वामी। ४६६ सर्वसाक्षी = सबैका साक्षी ( द्रष्टा )। ४६७ गुणश्रेष्ठ = दया दाक्षिण्य आदि गुणले श्रेष्ठ। ४६८ देवाऽसुरवर-प्रद = आफ्ना भक्त भएका देवता र दैत्यहरूलाई वर दिने॥ ५७॥

देवाऽधिदेवो देवर्षिर्देवाऽसुरनमस्कृतः।
सर्वदेवमयश्चक्री शार्ङ्गपाणिरनुत्तमः॥ ५८॥

अनु०—४६९ देवाऽधिदेव = देवताहरूमा श्रेष्ठ देवता। देवर्षि = नारद-स्वरूप, देवाऽसुरनमस्कृत = देवताहरू र दैत्यहरूले नमस्कार गरिएका। ४७० सर्वदेवमय = समस्तदेवस्वरूप। ४७१ चक्री = चक्र ( समूह वा सेना ) भएका। ४७२ शार्ङ्गपाणि = शार्ङ्ग ( धनु ) हातमा लिएका। ४७३ अनुत्तम = सबै भन्दा उत्तम ( श्रेष्ठ )॥ ५८॥

मनो बुद्धिरहङ्कारः प्रकृतिः पुरुषोऽव्ययः।
न्यायो न्यायी नयी श्रीमान् नयो नगधरो ध्रुवः॥ ५९॥

अनु०—४७४ मनः = मन ( सङ्कल्पविकल्प ) स्वरूप। ४७५ बुद्धि = निश्चयस्वरूप भएको तत्त्व। ४७६ अहङ्कार = गर्व ( घमण्ड ) विषय

भएको तत्त्व । ४७७ प्रकृति=प्रधान अथवा माया । ४७८ पुरुष=आत्मा । ४७९ अव्यय=नाश नहुने । ४८० न्याय=न्यायशास्त्रस्वरूप अथवा इन्साफ । ४८१ न्यायी=न्याय गर्ने । ४८२ नयी=नय (नीति) भएका । ४८३ श्रीमान्=लक्ष्मी भएका । ४८४ नय=नीतिस्वरूप । ४८५ नगधर= नग ( मन्दरपर्वत वा कृष्णाऽवतारमा गोवर्द्धन पर्वत ) लाई धारण गर्ने । ४८६ ध्रुव=नित्य अथवा उत्तानपादका पुत्र ध्रुवस्वरूप ॥ ५९ ॥

लक्ष्मीविश्वम्भरो भर्त्ता देवेशो वालिमर्दनः ।
वाणाऽरिमर्दनो यज्वा ह्युत्तमो मुनिसेवितः ॥ ६० ॥

अनु०—४८७ लक्ष्मीविश्वम्भरः=लक्ष्मी र विश्व ( संसार ) को धारण गर्ने । ४८८ भर्ता=धारण पोषण गर्ने । ४८९ देवेश=देवताका स्वामी । ४९० वालिमर्दन=वालीलाई मर्दन गर्ने । ४९१ वाणाऽरिमर्दन= बाणले शत्रुको मर्दन गर्ने । ४९२ यज्वा=विधिपूर्वक यज्ञ गर्ने । ४९३ उत्तम=श्रेष्ठ । ४९४ मुनिसेवित=मुनिहरूले सेवा गरिएका ॥ ६० ॥

देवाऽग्रणीः शिवध्यानतत्परः परमः पुरः ।
सामगेयप्रियः शूरः पुण्यकीर्तिः सुलोचनः ॥ ६१ ॥

अनु०—४९५ देवाऽग्रणी=देवताहरूमा श्रेष्ठ । ४९६ शिवध्यानतत्पर=शिवजीको ध्यानमा तत्पर ( लागेका ) । ४९७ परम=श्रेष्ठ । ४९८ पुरः=अग्रस्वरूप । ४९९ सामगेयप्रियः=सामस्वरूप जो गेय गानयोग्य वेद त्यो प्यारो भएका । ५०० शूरः=पराक्रमी । ५०१ पुण्यकीर्ति =पवित्र कीर्ति भएका । ५०२ सुलोचन=सुन्दर नेत्र भएका ॥ ६१ ॥

पुण्यः पुण्याऽधिकः पूर्वः पूर्णः पूरयिता रविः ।
जटिलः कल्मषध्वान्तप्रभञ्जनविभावसुः ॥ ६२ ॥

अनु०—५०३ पुण्य=धर्मस्वरूप । ५०४ पुण्याऽधिक = धर्मले अधिक । ५०५ पूर्व=सब भन्दा प्रथम । ५०६ पूर्ण=समग्र । ५०७

पूरयिता=पूर्ण गर्ने। ५०८ रवि=स्तुति गरिने अथवा सूर्य। ५०९ जटिलः=जटाधारी। ५१० कल्मषध्वान्तप्रभञ्जनविभावसु=पापरूप अन्धकारको नाश गर्ने सूर्यजस्ता ॥ ६२ ॥

अव्यक्तलक्षणो व्यक्तो दशास्य-द्विप-केशरी।

कलानिधिः कलारूपः कमलानन्दवर्द्धनः ॥ ६३ ॥

अनु०—५११ अव्यक्तलक्षण=स्पष्टलक्षण न भएका अर्थात् निराकार। ५१२ व्यक्त=भक्तहरूलाई स्पष्ट अर्थात् साकार। ५१३ दशास्यद्विप-केशरी=दशास्य (रावण) रूप द्विप (हाती) को नाश गर्ने केशरी अर्थात् सिंहस्वरूप। ५१४ कलानिधि=नृत्यगीत आदि चौसठ्ठी कला-हरूका निधि (खजाना) स्वरूप अथवा चन्द्रजस्ता मनोहर। ५१५ कलारूप=नृत्यआदि कलास्वरूप। ५१६ कमलानन्दवर्द्धन=कमला (लक्ष्मी) रूपिणी सीताको आनन्द बढ़ाउने ॥ ६३ ॥

जयो जराऽरिसम्पूर्णः सुमना भवभञ्जनः।

अलङ्करिष्णुरचलो रोचिष्णुर्विक्रमोत्तमः ॥ ६४ ॥

अनु०–५१७ जय=विजयस्वरूप। ५१८ जराऽरिसम्पूर्ण=बुढ्याइँका शत्रुरूप पूर्णपुरुष। ५१९ सुमनाः=उत्तम मन भएका अथवा देवस्वरूप, अथवा विद्वत्स्वरूप। ५२० भवभञ्जन=भव (संसार) को भङ्ग गर्ने। ५२१ अलङ्करिष्णु=अलङ्कार धारण गर्ने स्वभाव भएका। ५२२ अचल=पर्वतजस्ता स्थिर। ५२३ रोचिष्णु=अलङ्कार आदिले शोभित हुने। ५२४ विक्रमोत्तम=पराक्रमले उत्तम ॥ ६४ ॥

आयुः शब्दपतिः शब्दगोचरो रञ्जनो लघुः।

निःशब्दः पुरुषो मायी स्थूलसूक्ष्मविलक्षणः ॥ ६५ ॥

अनु०—५२५ आयुः=आयुःस्वरूप। ५२६ शब्दपति=शब्दका स्वामी। ५२७ शब्दगोचर=शब्द प्रमाणले ग्रहण गरिने। ५२८ रञ्जन=

राग (अनुराग) उत्पन्न गर्ने। ५२९ लघु=हल्का अथवा सुन्दर। ५३० निःशब्द=शब्दका विषय नभएका। ५३१ पुरुष=क्षेत्रज्ञस्वरूप। ५३२ मायी=मायाका अधिष्ठाता। ५३३ स्थूलसूक्ष्मविलक्षण=स्थूल (पर्वत आदि) सूक्ष्म (परमाणु आदि) पदार्थ भन्दा भिन्न किसिमका ॥ ६५ ॥

आत्मयोनिरयोनिश्च शतजिह्वः सहस्रपात् ।
अमृतांऽशुर्महागर्भो निवृत्तविषयस्पृहः ॥ ६६ ॥

अनु०—५३४ आत्मयोनि=समस्त आत्माहरूका कारणस्वरूप। ५३५ अयोनि=कारण नभएका (स्वयम्भू)। ५३६ शतजिह्वः=विश्वरूप लिंदा सैकड़ौं जिभ्रा भएका। ५३७ सहस्रपात्=विश्वरूपमा हजारौं पाउ भएका। ५३८ अमृतांऽशु=चन्द्रस्वरूप आनन्ददायक। ५३९ महागर्भ=ठूलो गर्भ भएका। ५४० निवृत्तविषयस्पृहः=शब्द आदि विषयको भोग गर्ने अभिलाष नभएका ॥ ६६ ॥

त्रिकालज्ञो मुनिः साक्षी विहायसगतिः कृतिः ।
सनातनतमः स्रग्वी पेशलो जीविनां वरः ॥ ६७ ॥

अनु०—५४१ त्रिकालज्ञः=तीनै कालको वृत्तान्त जान्ने। ५४२ मुनिः=मुनिस्वरूप अथवा मौन लिने। ५४३ साक्षी=प्रत्यक्षदर्शी। ५४४ विहायसगति=पुष्पक विमानमा चढ़ेर आकाशमा गमन गर्ने। ५४५ कृति=प्रयत्नस्वरूप। ५४६ सनातनतमः=सबै भन्दा प्राचीन। ५४७ स्रग्वी=फूलको माला पहिरेका। ५४८ पेशल=चतुर अथवा सुन्दर। ५४९ जीविनां वरः=प्राणीहरूमा श्रेष्ठ ॥ ६७ ॥

शक्तिमान् शङ्खभृन्नाथो गदाधर-रथाऽङ्गभृत् ।
निरीहो निर्विकल्पश्च चिद्रूपोऽतीतसाध्वसः ॥ ६८ ॥

